## मनुष्य बाँदर बाट विकसित (पैदा भएको) नभएर सर्वप्रथम युवा रुपमा पैदा भएको थियो



**पाश्चात्य विद्वानहरुको कूपमंडूकता** नै भन्नु पर्दछ कि उनीहरुले जे सोंच्ने गर्दछन्, त्यो मात्र सही हो। हाम्रा मनीषीहरुको जो चिन्तन छ, त्यो गलत छ। यस विषयमा यो लेखको माध्यम बाट उनीहरुको यहि भ्रान्ति निवारण गर्ने प्रयास गरिनेछ। यो लेख वेद आदि शास्त्रहरुको प्रमाण संग सम्बंधित छ। यस अनुसार मनुष्य बाँदर रूपमा नभएर युवा रूपमा पैदा भएको थियो।

पश्चिमी आसुरी सभ्यतामा चार्ल्स डार्विनको मनोवाद- विकासवादको सिद्धांत प्रचलित छ। यसका अनुसार मनुष्य पहिले बाँदरको रूपमा पैदा भयो र पछी विकास हुँदै मनुष्य बन्यो। वैदिक विचारधाराले यस किसिमको विकासवादलाई मान्दैन। वेदका अनुसार मनुष्य सृष्टि उत्पत्ति कालमा युवा रूपमा पैदा भएको थियो। यदि बालक रूपमा पैदा हुन्थ्यो भने आफ्नो पालन-पोषण गर्न असक्षम हुने थियो र यदि वृद्ध हुन्थ्यो भने सन्तान उत्पत्तिमा असक्षम हुन्थ्यो। त्यसैले ईश्वरले अनेकौं मनुष्यहरुलाई युवा रूपमा नै पैदा गरेको थियो। उनीहरुको सम्बन्ध बाट मनुष्यहरुका अगाडीका पिढी पैदा भए। सर्वप्रथम सृष्टि अमैथुनी थियो त्यस्पछिको मैथुनी।

वेदमा सृष्टि उत्पत्तिको समयमा मनुष्यहरु अमैथुनी सृष्टि द्वारा युवावस्थामा भएको प्रमाण भेटिन्छन्ः

ते अज्येष्ठा अकनिष्ठास उद्भिदोऽ मध्यमासो महसा वि वावृधुः।
सुजातासो जनुषा पृश्निमातरो दिवो मर्या आ नो अच्छा जिगातन।।(ऋ. ५/५९/६)

भावार्थः- सृष्टिको आरम्भमा उत्पन्न हुने मनुष्य वनस्पति आदि सरह उत्पन्न भए। उनमा कुनै जेठो-कान्छो अथवा माइलो थिएन, अवस्थामा ति सब समान थिए। ति तेज गतिमा बढे। उत्कृष्टजन्मा तिनीहरु जन्म देखि प्रकृति माताका प्रकाशमय परमात्माका पुत्र हामी सब मनुष्यहरुको अपेक्षा अत्यन्त उत्कृष्ट हुन्।

अज्येष्ठासो अकनिष्ठास एते सं भ्रातरो वावृधुः सौभगाय ।
युवा पिता स्वपा रुद्र एषां सुदुघा पृश्निः सुदिना मरुद्भ्यः ।।-(ऋ. ५/६०/५)

भावार्थः- सर्गारम्भमा उत्पन्न भएका मनुष्यहरु सानो र ठूलो देखि रहित हुन्छन्। यिनीहरु भात्री कल्याणका लागि अगाडी बढ्छन्। सदा तन्नेरी, सदा श्रेष्ठकर्मा, पापिहरुलाई रुवाउने सर्वशक्तिमान परमात्मा यिनका पिता हुन्छ र परिश्रमी मनुष्यहरुका लागि सुदिन ल्याउने प्रकृति अथवा पृथिवी यिनका लागि सम्पूर्ण मनोरथ पूर्ण गर्ने हुन्छिन्।

यी मन्त्रहरुमा तन्नेरी अवस्थामा मनुष्यहरुको उत्पत्ति भएको अत्यन्त स्पष्ट वर्णन छ। अब त पाश्चात्य विद्वानहरुले पनि यो कुरा स्वीकार गर्न थालेका छन्। बोस्टन नगरको स्मिथ-सोनयिम इनस्टीटयूशनका अध्यक्ष डा, क्लार्कको कथन छ-

“Man appeared able to walk, able to think and able to defend himself.”

अर्थात् मनुष्य उत्पन्न हुना साथ हिड-डुल गर्ने, विचारगर्ने तथा आत्मरक्षा गर्नमा समर्थ थियो।

सर्गारम्भमा एउटा-दुइटा मात मनुष्य उत्पन्न भएनन्, अनेकौं स्त्री-पुरुष उत्पन्न भएका थिए। यजुर्वेदमा भनिएको छः-

तेन देवा अयजन्त साध्या ऋषयश्च ये।। (यजु. ३१/९)

अर्थः- उस परमेश्वरले मनुष्य र ऋषिहरुलाई उत्पन्न गर्यो।

यहाँ “साध्याः” र “ऋषयः” दुवै बहुवचनमा छन्, अतः ईश्वरले सैयौं-हजारौं मनुष्यहरु उत्पन्न गर्यो। मुण्डकोपनिषद्मा पनि यहि कुराको समर्थन गरिएको छ-

तस्माच्च देवा बहुधा सम्प्रसूताः,साध्या मनुष्याः पश्वो वयांसि।।(मुण्डक. २/१/७)

अर्थः- उस पुरुष (परमात्मा) बाट अनेक प्रकारका देव= ज्ञानीजन, साधनशील मनुष्य, पशु र पंक्षीहरु उत्पन्न भए।

महर्षि दयानन्द सरस्वति द्वारा चार्ल्स डार्विन र उसको उँधोमुन्टे- विकासवादको बारेमा गरिएको तात्कालिक दुईवटा टिप्पणि पनि यहाँ प्रस्तुत छ-

भारतको उत्तराखण्ड राज्यमा स्थित रूडकीमा सन् १८७८मा दिइएको एक भाषणमा उनले भनेका थिए कि “जुन समयमा जसरि बाँदर बाट मनुष्य उत्पन्न भयो, पछी भविष्यमा पनि बाँदरले त्यहि प्रकारको कर्म गरेर मनुष्य उत्पन्न नगर्ने भनेर कुनै प्रकारको बन्धन लगाइएको थिएन भने फेरी के कारणले हो कि त्यस काल पश्चात अहिले सम्म एउटा पनि मनुष्य बाँदर बाट उत्पन्न भएन? जब ति सबै नर पशु र नारी पशु, जसको संयोग बाट मनुष्य भएका थिए, पृथिवीमा उपस्थित थिए।”

भारतको उत्तर प्रदेश राज्यको बरेलीमा सन् १८७९, अगस्त २५ मा अर्को पटक टिप्पणी गर्दै दयानन्दले पादरी टी.जे. स्काटलाई शास्त्रार्थमा भनेका थिए कि “जसलाई तिमीले सुशिक्षित भन्ने गर्दछौ, ति जाति मध्ये कुनै मनुष्य अर्थात् दार्शनिक या विचारक (चार्ल्स डार्विन) ले बाँदर बाट मनुष्य (उत्पन्न) हुने मान्दछ, त्यो सर्वथा मिथ्या छ।”

वेदको प्रमाणले यो सिद्ध हुन्छ कि मनुष्य बाँदर बाट नभएर सबभन्दा पहिले युवा रूपमा पैदा भएको थियो। अस्तु..

नमस्ते..!

सत्य सनातन वैदिक धर्मको जय..!

(हार्दिक आभारः डा. विवेक आर्य)